# नागरिक तथा राजनीतिक अधिकार सम्बन्धी
# अन्तर्राष्ट्रिय प्रतिज्ञापत्रको स्वेच्छिक प्रोटोकल

(नेपालले १४ मे १९९१ तद अनुसार ३१ बैशाख २०४८ मा सम्मिलन गरेको)

महासभाको १६ डिसेम्वर १९६६ को प्रस्ताव नम्वर २२०० ए (२१) बाट ग्रहण गरी हस्ताक्षर, अनुमोदन र सम्मिलनकाको लागि खुला गरिएको

लागू भएको मितिः धारा ९ अनुसार, २३ मार्च १९७६ तद अनुसार १० चैत्र २०३२

प्रस्तुत प्रोटोकलका पक्ष राष्ट्रहरु,

नागरिक तथा राजनीतिक अधिकार सम्बन्धी अन्तर्राष्ट्रिय प्रतिज्ञापत्र (यसपछि "प्रतिज्ञापत्र" भनिएको) का उद्देश्यहरु अझ हासिल गर्ने तथा यसका व्यवस्थाहरुलाई कार्यान्वयन गर्ने उद्देश्यले सो प्रतिज्ञापत्रको भाग ४ अन्तर्गत गठित मानव अधिकार समिति (यसपछि "समिति" भनिएको) लाई प्रस्तुत प्रोटोकलमा व्यवस्था गरिए बमोजिम सो प्रतिज्ञापत्रमा उल्लिखित कुनै पनि अधिकारको उल्लंघनबाट पीडित भएको दावी गर्ने व्यक्तिहरुबाट दावीको सूचना प्राप्त गरी सो उपर विचार गर्न सक्षम बनाउन उपयुक्त हुने कुरा विचार गर्दै,

देहाय बमोजिम सहमत भएका छन्:

### धारा १

प्रस्तुत प्रोटोकलको पक्ष हुने प्रतिज्ञापत्रको कुनै पक्ष राष्ट्रले प्रतिज्ञापत्रमा उल्लिखित कुनै पनि अधिकारको सो पक्ष राष्ट्रबाट उल्लंघन भएर आफू पीडित भएको दावी गर्ने आफ्ना क्षेत्राधिकार भित्रका व्यक्तिबाट सूचना प्राप्त गरी सो उपर विचार गर्नसक्ने समितिको सक्षमता स्वीकार गर्दछ । प्रतिज्ञापत्रको पक्ष भएको तर प्रस्तुत प्रोटोकलको पक्ष नभएको पक्ष राष्ट्रसँग सम्बन्धित कुनै पनि सूचना समितिले प्राप्त गर्नेछैन ।

### धारा २

धारा १ को व्यवस्थाको अधिनमा रही, प्रतिज्ञापत्रमा व्यवस्था गरिएका आफ्ना कुनै पनि अधिकार उल्लंघन भएको दावी गर्ने व्यक्तिहरुले उपलब्ध सम्पूर्ण घरेलु उपचारहरु उपयोग गरिसकेपछि समितिको विचारका लागि समिति समक्ष लिखित सूचना पेश गर्न सक्नेछन् ।

**धारा ३**

समितिले कुनै पनि सूचना, जुन वेनामी छ वा समितिको विचारमा त्यस्तो सूचना पेश गर्न पाउने अधिकारको दुरुपयोग हो वा प्रतिज्ञापत्रका व्यवस्थाहरु अनुकूल छैन, लाई यस धारा अन्तर्गत अग्राह्य मान्नेछ ।

**धारा ४**

१. धारा ३ का व्यवस्थाहरुको अधिनमा रही, समितिले प्रस्तुत प्रोटोकल अन्तर्गत आफू समक्ष पेश गरिएका कुनै पनि सूचनालाई प्रतिज्ञापत्रको कुनै व्यवस्था उल्लंघन गरेको आरोप लागेको प्रस्तुत प्रोटोकलको पक्ष राष्ट्रको ध्यानमा ल्याउनेछ ।

२. सूचना ग्रहण गर्ने राष्ट्रले विषयवस्तु र आफूले कुनै उपचार दिलाएको भए सो समेत स्पष्ट पार्ने लिखित स्पष्टिकरण वा बयानहरु छ महिनाभित्र समिति समक्ष पेश गर्नेछ ।

**धारा ५**

१. व्यक्तिबाट तथा सम्बन्धित पक्ष राष्ट्रबाट समितिलाई उपलब्ध गराईएका सबै लिखित जानकारीका आधारमा समितिले प्रस्तुत प्रोटोकल अन्तर्गत प्राप्त गरिएका सूचनाहरु उपर विचार गर्नेछ ।

२. समितिले देहायका कुराहरु एकिन नगरेसम्म कुनै पनि व्यक्तिबाट प्राप्त सूचना उपर विचार गर्नेछैन:

(क) अन्तर्राष्ट्रिय अनुसन्धान वा निरोपणको अर्को कार्यविधि अन्तर्गत सोही कुरा छानविन भई नरहेको,

(ख) सो व्यक्तिले उपलब्ध सवै घरेलु उपचारहरु उपयोग गरिसकेको । उपचारहरु लागू गर्न अनुचित रुपमा ढिलाई हुने देखिएको अवस्थामा यो व्यवस्था लागू हुने छैन ।

३. प्रस्तुत प्रोटोकल अन्तर्गत सूचना परीक्षण गर्दा समितिले गोप्य बैठकहरु गर्नेछ ।

४. समितिले सम्वन्धित पक्ष राष्ट्र तथा व्यक्तिलाई आफ्ना विचारहरु पठाउनेछ ।

**धारा ६**

समितिले प्रस्तुत प्रोटोकल अन्तर्गत गरिएका काम कारवाहीको सारांश प्रतिज्ञापत्रको धारा ४५ अन्तरगतको आफ्नो वार्षिक प्रतिवेदनमा समावेश गर्नेछ ।

**धारा ७**

महासभाको १४ डिसेम्वर १९६० को प्रस्ताव १५१४ (१५) मा रहेका औपनिवेशिक देशहरु तथा जनताहरुलाई स्वाधिनता प्रदान गर्ने सम्बन्धी घोषणापत्रका उद्देश्यहरु हासिल नभएसम्म, प्रस्तुत प्रोटोकलका व्यवस्थाहरुले संयुक्त राष्ट्र संघको वडापत्र र अन्य अन्तर्राष्ट्रिय महासन्धि तथा लिखतहरुबाट यी जनताहरुलाई प्रदान गरिएको निवेदन गर्ने अधिकारलाई कुनै पनि रुपमा सीमित गर्ने छैनन् ।

**धारा ८**

१. प्रस्तुत प्रोटोकल प्रतिज्ञापत्रमा हस्ताक्षर गरेको कुनै पनि राष्ट्रबाट हस्ताक्षर हुनका लागि खुला रहनेछ ।

२. प्रतिज्ञापत्र अनुमोदन गरेका वा त्यसमा सम्मिलन भएको कुनै पनि राष्ट्रबाट प्रस्तुत प्रोटोकल अनुमोदन हुनु पर्नेछ । अनुमोदनका लिखतहरु संयुक्त राष्ट्र संघका महासचिव समक्ष दाखिला गरिनेछ ।

३. प्रस्तुत प्रोटोकल प्रतिज्ञापत्र अनुमोदन गरेको वा त्यसमा सम्मिलन भएको कुनै पनि राष्ट्रबाट सम्मिलन हुनका लागि खुला रहनेछ ।

४. सम्मिलनको लिखत संयुक्त राष्ट्र संघका महासचिव समक्ष दाखिला भएपछि सम्मिलन प्रभावकारी हुनेछ ।

५. संयुक्त राष्ट्र संघका महासचिवले प्रस्तुत प्रोटोकलमा हस्ताक्षर गरेका वा यसमा सम्मिलित भएका सबै राष्ट्रहरुलाई अनुमोदन वा सम्मिलनको प्रत्येक लिखत दाखिला भएको कुराको जानकारी दिनेछन् ।

**धारा ९**

१. प्रतिज्ञापत्र लागू हुने कुराको अधिनमा रही, अनुमोदन वा सम्मिलनको दशौं लिखत संयुक्त राष्ट्र संघका महासचिव समक्ष दाखिला भएको मितिले तीन महिनादेखि प्रस्तुत प्रोटोकल लागू हुनेछ ।

२. अनुमोदन वा सम्मिलनको दशौं लिखत दाखिला भएपछि प्रस्तुत प्रोटोकल अनुमोदन गर्ने वा यसमा सम्मिलन हुने प्रत्येक राष्ट्रको हकमा त्यस्तो राष्ट्रले आफ्नो अनुमोदन वा सम्मिलनको लिखत दाखिला गरेको मितिले तीन महिनादेखि प्रस्तुत प्रोटोकल लागू हुनेछ ।

**धारा १०**

प्रस्तुत प्रोटोकलका व्यवस्थाहरु संघीय राष्ट्रका सबै भागहरुमा कुनै सीमा वा अपवाद विना विस्तार हुनेछन् ।

**धारा ११**

१. प्रस्तुत प्रोटोकलको कुनै पनि पक्ष राष्ट्रले संशोधन प्रस्ताव गर्न र सो संशोधन संयुक्त राष्ट्र संघका महासचिव समक्ष दर्ता गर्न सक्नेछ । महासचिवले सो प्रस्ताव उपर विचार एवं मतदान गर्ने उद्देश्यले पक्ष राष्ट्रहरुको सम्मेलन गर्ने पक्षमा उनीहरु भए नभएको कुराको सूचना निजलाई दिने अनुरोध सहित प्रस्तावित संशोधन पक्ष राष्ट्रहरुलाई पठाउने छन् । कम्तिमा एक तिहाई पक्ष राष्ट्रहरु त्यस्तो सम्मेलनको पक्षमा भएमा महासचिवले संयुक्त राष्ट्र संघको तत्वावधानमा सो सम्मेलनको आयोजना गर्नेछन् । महासचिवले सो सम्मेलनमा उपस्थित भई मतदान गर्ने पक्ष राष्ट्रहरुको वहुमतबाट ग्रहण गरिएको कुनै पनि संशोधन स्वीकृतिका लागि संयुत्त राष्ट्र संघको महासभा समक्ष पेश गर्नेछन् ।

२. संयुक्त राष्ट्र संघको महासभाबाट स्वीकृत भएपछि र प्रस्तुत प्रोटोकलका पक्ष राष्ट्रहरुको दुई तिहाई बहुमतबाट आ-आफ्ना संवैधानिक प्रक्रिया अनुसार स्वीकृत भए पछि संशोधनहरु लागू हुनेछन् ।

३. संशोधनहरु लागू भएपछि ती संशोधनहरु स्वीकार गर्ने पक्ष राष्ट्रहरुका हकमा वाध्यात्मक हुनेछन् भने अन्य पक्ष राष्ट्रहरुका हकमा प्रस्तुत प्रोटोकलका व्यवस्थाहरु तथा उनीहरुले स्वीकार गरेका कुनै पनि अघिल्ला संशोधनहरु बाध्यात्मक हुनेछन् ।

**धारा १२**

१. कुनै पनि पक्ष राष्ट्रले संयुक्त राष्ट्र संघका महासचिवलाई लिखित सूचना दिई कुनै पनि समयमा प्रस्तुत प्रोटोकल परित्याग गर्न सक्नेछ । महासचिवबाट त्यस्तो सूचना प्राप्त गरेको मितिले तीन महिनादेखि परित्याग लागू हुनेछ ।

२. परित्याग लागू हुने मिति भन्दा अगाडि धारा २ अन्तर्गत पेश गरिएको कुनै सूचनाका हकमा प्रस्तुत प्रोटोकलका व्यवस्थाहरुको निरन्तर प्रयोगलाई परित्यागले प्रतिकूल प्रभाव पार्ने छैन ।

**धारा १३**

प्रस्तुत प्रोटोकलको धारा ८ को प्रकरण ५ अन्तर्गत सूचना दिईएको भए तापनि संयुक्त राष्ट्र संघका महासचिवले प्रतिज्ञापत्रको धारा ४८ को प्रकरण १ मा उल्लिखित सबै राष्ट्रहरुलाई देहायका विवरणहरुको जानकारी दिनेछन्:

(क) धारा ८ अन्तर्गतका हस्ताक्षर, अनुमोदन र सम्मिलनहरु,

(ख) धारा ९ अन्तर्गत प्रस्तुत प्रोटोकल लागू हुने मिति र धारा ११ अन्तर्गत संशोधनहरु लागू हुने मिति,

(ग) धारा १२ अन्तर्गतका परित्यागहरु ।

**धारा १४**

१. अरवी, चीनीया, अंग्रेजी, फ्रान्सेली, रसियाली र स्पेनी भाषाका प्रतिहरु समान रुपले प्रामाणिक हुने प्रस्तुत प्रोटोकल संयुक्त राष्ट्र संघको अभिलेखालयमा दाखिला गरिनेछ ।

२. संयुक्त राष्ट्र संघका महासचिवले प्रतिज्ञापत्रको धारा ४८ मा उल्लिखित सबै राष्ट्रहरुलाई प्रस्तुत प्रोटोकलका प्रमाणित प्रतिहरु पठाउने छन् ।